# मुना-मदन को अग्रज
# जि वया ला लछि मदुनि
## (म आएको महिना दिन नबित्दै)



पुष्प चित्रकार

"मुना-मदन बाहेक मेरा अरू सबै कृति जलाइदिए पनि हुन्छ।" - देवकोटा

महाकवि लक्ष्मीप्रसाद देवकोटाको कृतिहरूमा "मुना-मदन" खण्डकाव्यले जस्तो प्रसिद्धि अरू कुनैले पाउन सकेन। हुन त "मुना मदन" भन्दा सवोत्कृष्ट कृतिहरू नरचेका होइनन् उनले। "मुना मदन" खण्डकाव्य भन्दा उच्चकोटिका "शकुन्तला", "सुलोचना" महाकाव्य, लक्ष्मी निबन्ध संग्रह जस्ता उहाँका अरु धेरै साहित्य साधनाहरू छन। तर पनि "मुना-मदन"ले देवकोटालाई अमर बनाए, अझ अजर तुल्याए। "मुना-मदन" नजन्मेको भए साहित्याकाशमा देवकोटाको प्रकाश त्यति चहकिलो हुनेमा शायद संदेह नै हुने थियो होला। नेपालीहरूका जीवनमा देवकोटा हराउँथे पनि होलान्। तर "मुना-मदन" जन्मेदेखि मरेन, कहिल्यै मरेन, दुई करोड नेपालीहरूका जीवन ओगटेर बस्यो। यसैले देवकोटा कहिल्यै मरेनन्। नेपालीहरूको जनजीवनबाट कहिल्यै बिलाएनन्। देश विदेशका प्रतिष्ठित व्यक्तिहरुले उनको मुक्त कण्ठले प्रशंसा गरे।

"मुना मदन"ले गाउँ गाउँ पुगेर झुप्रो झुप्रो चहारे, शोषित, पीडितको मुटु, मुटु छामे। जनताले झ्याउरे लयमा गुनगुनाए देवकोटाको "मुना मदन" साँच्चै आफू आफू नै "मुना मदन" संझेर।

यी सबैको सन्दर्भमा म भित्र कता कता प्रश्नै प्रश्न उठ्छ। के फेरि नेपालको साहित्याकाशमा यस्तो काव्य देखा पर्न सक्ला ? शहर, पहाड, लेक, बेंसीका समस्त नेपालीमा स्वच्छन्द झ्याउरे लयमा "मुना मदन"को धुन गुनगुनाए झैं, अर्को काव्यले गुनगुनाउन पाउला त ? के "मुना मदन"को जस्तो कथानक, विषयवस्तु, वातावरण, चरित्र चित्रण, लय आदिको सन्निपात यो भन्दा अघिको नेपालको साहित्यमा देखा परेका थिएनन् त ?

नेपालका बुद्धिजिवी कहलाएका केही व्यक्तिहरूले निर्क्यौल गरेका छन्– "मुना-मदन" जस्तो काव्य नेपालको साहित्याकाशमा कहिल्यै देखा परेन। प्रसिद्ध आलोचक समालोचकहरू अघि पछि नहेरी भन्छन - "भूत, वर्तमान र भविष्य "मुना-मदन" काव्य हो। उहाँहरू लेख्नुहुन्छ– "मुना-मदन" खण्डकाव्य जस्तो न पहिले निस्के न त पछि नै निस्कने छ।"

"मुना-मदन" काव्यलाई मात्र लिएर बुद्धिजीवी, साहित्यकारहरूले सोच विचारै नगरी, खोजीनितीमा नै नलागी बिना अनुसन्धान एकै बाजी यसरी भन्नु, निश्चित गर्नु अवश्य पनि उचित होईन। बिना खोजनिती, बिना अन्वेषण यस्तो निर्णय गर्नु या त नेपालको माटोमा जन्मि नेपालकै हावापानीमा हुर्कि नेपाललाई नचिन्नु हो या त अहं वा पूर्वाग्रहको कारण सत्यलाई लत्याउनु हो। यो नेपालको साहित्याकाशमा नै तुवाँलो लगाउन खोज्नु गम्भिर पाईला हो।

नेपाल विभिन्न जाति र विभिन्न भाषाले सुसज्जित देश हो। यहाँ विभिन्न भाषामा रचिएका विभिन्न साहित्य साधनहरू छन्। तर भाषा क्षेत्रमा छाएको अनुदारवादले गर्दा एउटा बाहेक अन्य कुनै पनि भाषा प्रस्फुरण हुन सकिरहेको छैन। फलस्वरूप कयौं श्रेष्ठ साहित्यका विधाहरू कुहिए, ढुसिए, ध्वाँसिएर उडिसके। दुर्लभ साहित्यका कयौं पानाहरू अझै किटाणुको खेल मैदान बनी फुस्फुसाउँदै छन्। यो अवश्य पनि नेपालको साहित्य-इतिहासमा धमिरा लाग्नु जतिकै हो। यो सम्पूर्ण नेपालीको दुर्भाग्य हो। यो दुर्भाग्यले नेपालका बुद्धिजिवी र साहित्यकारको पवित्र भावनालाई ठेस पुर्‍याउँछ।

कोहि कोहि विज्ञ भनाउँदाहरु यसरी वास्तविकतालाई एकातिर पन्छाई अटेस-मटेस पूर्वाग्रह लिई फलाक्छन्– खस भाषामा जस्तो अरू भाषामा कुनै श्रेष्ठ साहित्य नै छैन। नेपालभाषा (नेवार भाषा) मा केही साहित्य छन् त मौलिक र उत्कृष्ट छैनन्। तिनीहरूका उद्देश्य के हुन् ? यो नेपालको साहित्य क्षेत्रको व्यापकता र विस्तारदेखि अपरिचित हुनु हो।

खस भाषा मात्र नेपाली भाषा होईन। तामाङ, लाप्ची, भोजपुरी, मैथिली, नेपालभाषा आदि पनि नेपालका भाषा अर्थात नेपाली हुन्। यी कुनै पनि भाषाले राम्रो साहित्यको विकास गरेको छ भने त्यो अवश्य नेपालको साहित्यले विकास गरेको सम्झनुपर्छ। नेपालको कुनै भाषामा महत्वपूर्ण साहित्य निस्केर विश्वमा राम्रो ठाउँ पायो भने त्यस्ले उही भाषाको जातिको मात्र होईन सबै नेपालीको इज्जत, गौरव तथा प्रतिष्ठा बढाउँछ। रविन्द्रनाथले गीताञ्जलीमा नोबेल पुरस्कार प्राप्त गरेर बंगाली जातिको मात्र गौरव र प्रतिष्ठा बढाएन बल्कि सम्पूर्ण भारतको नै गौरव बढायो। अझ एशिया महादेशको नै ईज्जत बढायो। यस दृष्टिले तामाङ, भोजपुरी, मैथिली, नेपालभाषा नेपालको भाषा अर्थात नेपाली हो भने नेपालको साहित्याकाशमा चम्किने जुनसुकै साहित्यलाई पनि राष्ट्रको तारापुञ्जको रूपमा लिइनु पर्दछ।

त्यही तारापुञ्जका एकपुञ्ज नेपालभाषाको साहित्य जनजीवनको प्रतिनिधित्व गर्ने साहित्य भएकोले यस्मा व्यक्ति विशेषको स्तुति वा गुणगान पाइँदैन। यसो भन्दा नेपालभाषामा साहित्य नै छैन भन्ने स्तुतिवादी साहित्यकारहरू भन्दो होलान्– नेपालभाषाको प्राचीन काव्यमा राजा-महाराजाको बखान प्रशस्त पाईए पनि मलाई लाग्छ ती काव्यहरुमा देखिएका राजा-महाराजाहरूको नाम उहाँहरूले चाहनु भएको चन्द्र शमशेरको समयमा रचित "चन्द्रोदय" जस्तो स्तुति-गानको रूपमा कदापि छैन। बरु काल (समय) परिचित गराउने ऐतिहासिक पृष्ठभूमिको रूपमा प्रस्तुत छन्।

नेपालभाषाको साहित्य समाजलाई अँगाली देशको अवस्था र स्थितिलाई दर्शाउनमा सफल छ। यस्ले देशको कला संस्कृतिलाई प्रकाशमा ल्याउने काम गरेको छ। यो प्रवृत्ति नेपालभाषाका वर्तमान साहित्यमा मात्र होइन नेपालभाषाका प्राचिन साहित्यमा पनि पाईन्छ। साथै नेपालभाषाको साहित्य मानवता र कर्तव्यको पाठ सिकाउन पनि पछि परेको छैन। एक युवक र एक युवतीको बिचको प्रेमलाई लत्याई, टुक्र्याई दिंदा

मानवताकानै हत्या हुन्छ भन्ने कुरा दर्शाउँदै आधुनिक दृष्टिकोणलाई उहिले नै समर्थन गरेको कुरा “स्वयृनगु” काव्यको अध्ययनले बताउँछ। ग्रीक र रोमको त्राशदी काव्यको स्तरमा राख्न सकिने “स्वयृनगु” काव्य अन्वेषक र आलोचकहरूले भाषा र शैलीको आधारमा लिच्छविकालको अन्त वा मल्लकालको शुरुशुरुमा रचेको हुनुपर्छ भनि प्रमाणित गर्न खोजे का छन्। त्यस्तै राजा राज्यप्रकाश मल्लको समयमा रचिएको “संसारया कारण” काव्यमा तलसिंह (जमिन्दार)ले मोही (किसान)माथि कसरी शोषण गर्छ भन्ने कुरा बोध गराउँदछ। यो काव्यले त्यति बेला हुने आर्थिक तथा सामाजिक शोषणको स्पष्ट चित्रण गरेको छ। त्यति बेला पनि शोषणले विवश र बाध्य भई आर्थिक उपार्जनको लागि नेपालीहरू आफु जन्मि, हुर्कि बढेको गाउं ठाउं छोडेर विदेशिने चलन थियो। आफ्ना आमा-बाबु, दाजु-भाई, दिदी-बहिनी, ईष्टमित्र र छरछिमेकी सबैको माया-ममतालाई हुत्याई विवश भएर विदेश जानेहरु त्यस बखत प्राय: धेरै जसो तिब्बततिर लाग्ने गर्दथ्यो। त्यतिबेला यसरी तिब्बत जाने चलन नेवारहरुमा मात्र सिमित थियो भन्ने कुरामा दुई मत हुन सक्दैन।

यसरी नेवारहरुमा तिब्बत तर्फ जाने चलन रहेको र यात्राको क्रममा हुने विभिन्न दु:ख कष्टको अनुभव यिनिहरुलाई हुनुको साथै नेपालभाषा त्यति बेलानै विकास भैसकेको हुंदा महाकवि देवकोटाको अमरकृति “मुना-मदन” भन्दा सयौं वर्ष अगाडिनै यस्ता कारुणिक काव्यहरु नेपालभाषामा प्रकाशन भैसकेको थियो। यि काव्यहरूलाई नेपाली साहित्यमा अजर र अद्वितीय मानिएको “मुना-मदन” काव्यको अग्रजको रुपमा लिईनु पर्दछ।

राजा जगज्जय मल्लको समयमा पुवारे लयमा “श्री नमस्तु श्री भीमराजा” काव्य रचेको पाईन्छ। यस काव्यको नायक आर्थिक उपार्जनको लागि भर्खरकी युवती पत्नीलाई छोडेर तिब्बततिर लाग्छ। नायक गएको धेरै समयसम्म पनि कुनै पत्र वा समाचार नपाउँदा मनमा अनेक शंका उपशंका उठ्न थालेपछि मुनामदनका मुनालाई झैं यस काव्यका नायिकालाई पनि खान-पिन बिलकुल रुचि हुँदैन र पीर व्यथाले गर्दा दुब्लाउँदै हाड र छाला मात्र बाँकी हुन्छिन र जहाँ गए पनि न्यास्रोको अनुभव गर्दछिन। अनि नायिका मनमा यसरी कुरा खेलाउन थाल्छिन–

अति मेव मीसायाके भुललपा चोननी

x x x

थव छोस चोङ तिटी मलुमासे चोननी

(विदेशमा तरुणीसित हिंडयौ कि डुलेर

घरकी आफनी प्रियषीलाई दियौ कि भुलेर)

अनि नायिका चरा झैं उडेर आफ्नो पतिलाई भेट्न जान इच्छा गर्छिन् तर असमर्थताले गर्दा यसरी भन्छिन्–

झंगलयात दुथी थें थोय गथे मदत

(सकिन किन चरी सरि सरर उडन)

यस्तै किसिमले मुना-मदनका मुना पनि आफ्नो मदनको कुनै समाचार नपाउँदा यसरि चिन्तित हुन्छिन्–

चिर्स्यो पो क्याटे ? हजुरलाई तरुनी स्वासामा

अनि उनी पनि चरीसरी उडेर जाने तीव्र इच्छा गर्छिन् तर असमर्थले गर्दा उनी पनि यसरि नै भन्छिन्–

पखेटा छैनन् उडेर जान चिडिया उडेका

यस्तै किसिमको अर्को काव्य रणबहादुर शाहको पालामा रचिएको “श्री भीमसेन दया तस्य बिहुनि” काव्यको नायक पनि धनको लागि भर्खरकी आफ्नी पत्नीलाई छोडेर तिब्बत जान लाग्दा नायिकाले आलाप विलाप गर्दै भन्छिन्–

छाय गथ्य छिओ जिओ बालखया पिरिति

थ्व नुगल गथ्य दुछ याय् न्हां

(हजुर सित छुट्टियर बसुं कसरी म

भक्कानो छुट्ने यो मनलाई थामुं कसरी म)

यही भावना करिब उस्तै तरिकाले मुना-मदन खण्डकाव्यमा पनि मदन तिब्बततिर जान लाग्दा मुनाले पनि अलाप विलापमा तैरिँदै भन्छिन्–

नछाडी जानोस् हे मेरा प्राण त्र अकेली मलाई

काव्यको पंक्ति मात्र हेर्दा “मुना मदन” र “श्री भीमसेन दया तस्य बिहुनि” काव्यमा अवश्यमेव फरक देखिन्छ। तर भावनाभूति दुवैको एउटै हो। यी दुवै काव्यमा नायिकाको आशय एउटै देखिन्छ। यस दृष्टिले “श्री भीमसेन दया तस्य बिहुनि” र “मुना मदन”मा समानता देखिन्छ। यस किसिमको समानता सिन्हाज्या लय (असारे लय) मा रणबहादुर शाहको समयमा र चिएको “मते मते श्री भीमराज”को नायकले पनि विवाह गरेर एक वर्ष पनि नबिताउँदै धनको निम्ति तिब्बत जान लाग्दा आफ्नी पत्नीको मनमा पिरोलिएको कुरा यसरी पोखिन्छ–

जि मन अति दुःख जुयू न्हां

(चोट मेरो हृदयमा पर्दछ है अति)

यही भावानुभूतिमा मुनाले पनि आफ्नो मनमा पिरोलिएको व्यथा यसरि पोख्छिन्–

यो मेरो मुटु पचासबाजी धड्कन्छ पलामा

यो छाती मेरो चिरेर खोली नजर गराए

यी दुवै काव्यको पंक्तिलाई तुलनात्मक दृष्टिले हेरेको खण्डमा अवश्यमेव बाहिरी सतहबाट फरक देखिएला। तर मनको आन्तरिक व्यथालाई बुझ्ने चेष्टा गरे दुवै काव्यको पंक्तिको भावार्थ उहि हो। दुवै काव्यको कथा एउटै हो, पात्रको चरित्र निर्माणमा पनि समानता देखिन्छ। हो, महाकवि देवकोटामा कल्पनाको तीव्रता छ, सोचाइमा गाम्भीर्य छ, अनि सुख दु:खको दर्शन छाँट्दै धन-दौलत मात्र जीवन होइन भन्ने ध्रुव सत्यलाई पुष्टचाइ गर्नुहुन्छ। यो गुण “मते मते श्री भीमराज” काव्यका कविमा पाइन्न। सायद कालगतिको वातावरणले गर्दा पनि मानिसको मस्तिष्कमा असर पर्ने हुँदा करिब १५० वर्ष अगाडिको कवि देवकोटाजी जस्तो कल्पनाको उडानमा जान नसक्नुमा कुनै आश्चर्य देखिन्न। तर “मते मते श्री भीमराजा” काव्यका मुख्य पात्रको रूपमा नायक, नायिका र आमा सम्मिलित एक सानो परिवारको चित्रण भएझैं “मुना मदन” काव्यमा पनि मुख्य पात्रको रूपमा मदन-मुना सम्मिलित एक सानो परिवारलाई नै लिईएको छ।

श्री नमस्तु श्री भीमराजा, श्री भीमसेन दयातस्य बिहुनि, मते मते श्री भीमराज र संदेश चोनाह्म काय् (भोटमा बस्ने छोरा) काव्यहरुको विषयवस्तु एउटै भए पनि कथानक, घटना र अन्त्य “जि वया ला लछि मदुनि”, “मुना मदन” काव्यभन्दा फरक देखिन्छ। “सँदेश चोनाह्म काय्या” काव्यमा केही समानता आउन खोजे तापनि आएको देखिन्न। तर “मुना मदन” राजा राजेन्द्र वीर विक्रम शाहदेवकै समयमा रचिएको “जि वया ला लछि मदुनि” काव्यको वस्तुस्थिति, घटना, उद्देश्य, प्राकृतिक वर्णन आदिमा सामञ्जस्य देखिन्छ।

“जि वया ला लछि मदुनि” नेपालभाषाको एक प्राचीन गीतिकाव्य हो। आर्थिक विसंगतिमा जकडिएका नायक विवाह भएको एक महिना नहुँदै आर्थिक बोझले गर्दा विवश र बाध्य भई धनको लागि कोमल पल्लव, मुखार विन्दुमा पलाएकी, मादकताले छाएकी भर्खरकी आफ्नी प्रिय पत्नीलाई आमाको स्याहार सुसार र घरधन्दा गरी बस्नु थौरै समयमा नै आउँछु भनेर तिब्बत जान्छ। तिब्बत गएको धेरै समयसम्म पनि नायकको कुनै पत्र नआउँदा पीर-व्यथा र चिन्ताको भुमरीमा नायिका भौंतारिन्छिन। आफ्नो हृदयको धडकन थाम्दै बूढी सासूले खान-पिन छोडेर दुब्ली पातली हुँदै गईरहेकी बुहारीलाई सम्झाउँदै गर्छिन्। तर धेरै अपशकुनका संकेतले यौवनले कलकलाउंदी बुहारीको मनलाई जित्छ। आफ्नो पतिको आसिक गरी झ्यालमा बत्ती दिंदा बत्ती धमिलो हुन्छ, सपनामा पतिको परलोक भएको देख्छिन। बिहानी पख बढार कुढार गर्दा काग आफ्नो सम्मुख आई कराउँछ।

यस्तै अपशकुनको विषयवस्तुले ऊनि आफूलाई सह्माल्न सक्तिनन । सासूले धेरै सम्झाउने कोसिस गर्छिन तर केहि सीप चल्दैन । यस्तैमा नायिकाको सौन्दर्यमा इर्ष्या र डाढ गरिरहेका आफ्नै स्वामिको सबै भन्दा मिल्ने मित्रले तिब्बतमा नायक मरेको चिन्ह सहित दुःखको झूठो समाचार ल्याउंछ । यस समाचारले मर्माहित नायिका कति सम्झाउँदा पनि नमानी पतिको नाममा सति जान्छिन । नायिका सति गएको केही दिनपछि नै नायक तिब्बतबाट खुसी हुँदै घर आईपुग्छन । आफ्नी धर्मपत्नीले देहत्याग गरेको कुरा सुनेर ऊ रुन्छ, अलाप विलाप गर्छ, भौंतारिन्छ र आफूले ल्याएको धन-दौलत सबै बेकार देख्छ । फलःस्वरुप उस्को मनमा जीवन के हो र भन्ने जस्तो नकारात्मक भावना उब्जिन्छ र आमा, आफन्त, छरछिमे कीहरूले सम्झाउँदा सम्झाउँदै पनि घरबार छोडेर जान्छन । यसरी "जि वया ला लछि मदुनि" गीतिकाव्यको अन्त दुखान्तको पराकाष्ठामा टुँगिन्छ।

"जि वया ला लछि मदुनि" काव्यको करिब एक शताब्दीभन्दा पछि १९९२ सालमा प्रकाशित भएको देवकोटाको अमर कृति "मुना-मदन" खण्डकाव्य त्यस्तै कथामा प्रस्तुत भएको छ । यसमा पनि आर्थिक विसंगतिमा जकडिएका मदन धनकै लागि सुकोमल, नागकन्या जस्ती मुनालाई थोरै समय मात्र बसेर आउंछु भनेर फकाई फुल्याई जान्छन र गएको धेरै दिन बितिसक्दा पनि कुनै समाचार नपाउँदा मुना उदेक हुन्छिन्, तिनलाई पीर व्यथाले सताउँछ। खान-पिन छोडेकीले दुब्ली पातली हुन्छिन् । जहाँ गए पनि न्यास्रोको अनुभव गर्छिन् । उनलाई पनि अपशकुनका संकेतहरू दे खापर्छन् । सपनामा भैंसीले लघारेको, दाहिने आँखा फर्फराएको आदिले उनको धैर्यता छिनिदिन्छ। तर बूढी सासूले सम्झाउँछिन् । सासू र बुहारी दुवैको सुर्ता गर्नमा होडबाजी हुन्छ। यतिकैमा सासू बिछ्यौनामा पर्छिन । तर पनि बुहारी धैर्य दिइरहन्छे। तर अन्त्यमा केही जोड चल्दैन । मुनाको रूपसी, मादकताले ईर्ष्या र डाह गरिरहेका मदनको मित्रले मदन तिब्बतमा परलोक भएको झूठो समाचार पुऱ्याइदिन्छ । यसले गर्दा मुनाको छाती चिरिन्छ। उनी भौंतारिन्छिन र अन्तमा मर्छिन् ।

मुना मरेको केही दिनपछि मदन धन लिएर खुशी हुँदै घर आईपुग्छ। तर आफ्नो आमा सिकिस्त अवस्थामा बिछ्यौनामा परिरहेको देखेर दुःखले आलापिन्छन । अझ आफ्नी धर्मपत्नी मुना मरेको सुन्दा आफूले आफै लाई थाम्न सक्तैनन र ऊ भौंतारिन थाल्छ । अन्तमा मदनकी आमा मर्छिन्। मदन पनि मर्छ। यसरी "मुना-मदन" खण्डकाव्य पनि दुखान्तको पराकाष्ठामा पुगेर टुँगिन्छ ।

यी दुवै काव्य वियोगान्तको पराकाष्ठामा टुँगिन्छ, तापनि एक अर्कोसँग अलिकता फरक छ । "मुना-मदन" खण्डकाव्यका मूल पात्रहरू मदन, मुना र मदनकी आमा तीनै जना पीर व्यथाले पिरोलिदै मर्छन् भने "जि वया ला लछि मदुनि" गीतिकाव्यमा केवल नायिकाको मृत्यु हुन्छ त्यो पनि सति गएर । नायिकाको मृत्युले विरहमा परेका नायक घर छोडेर जान्छन र आमा एक्लै हुन्छिन । यसरी यस काव्यमा पनि मूल तीन पात्र एक अर्कोसँग छुट्टिन्छ, जुन मृत्यु सरह नै हो भन्दा कुनै अत्युक्ति नहोला ।

"मुना-मदन" र "जि वया ला लछि मदुनि" दुवै काव्यले पाठकहरूको मनलाई रुवाउंछ । यसरि दुवै काव्य पाठकहरूको मन जित्न सफल भएको देखिन्छ ।

"मुना-मदन" र "जि वया ला लछि मदुनि" काव्यको कथा मात्र नभई प्रस्तुतिकरण समेत उस्तै देखिन्छ। दुवै काव्यको अन्त वियोग मात्र नभई शुरुआत समेत एकै किसिमको दृश्यले हुनु, नायक तिब्बतमानै जानु, जान लाग्दा नायिकाले नायकलाई नजान आग्रह गर्नु र नायकले नायिकालाई चाँडै फर्कन्छु भन्ने आश्वासन दिनु जस्ता क्षणहरु दुरुस्त छन । यति मात्र नभई कथाका मूख्य पात्रहरूको पनि एकै किसिमले चित्रण गरिएको छ। विधवा सासू, बेरोजगार नायक, यौवनले कलकलायकी नायिका, दुष्ट साथी आदि दुवै काव्यमा उस्तै छन् ।

"जि वया ला लछि मदुनि" गीतिकाव्यमा नायकले आफु चांडै फर्केर आउने अश्वासन दिंदै नायिकालाई यसो भन्दै फकाउंछन–

दा छि नि दा जक चोना वय न्हां
( फर्कन्छु है बसेर वर्ष दुई मात्र )

"मुना-मदन" खण्डकाव्यमा पनि नायकले यस्तै उद्‌गार पोख्छन । "जि वया ला लछि मदुनि"मा एक दुई वर्षको उल्लेख भएको छ भने "मुना-मदन"मा बिस चालिस दिनको मात्र उल्लेख छ ।

"जि वया ला लछि मदुनि" काव्यमा तिब्बतको बाटो कठिन भन्ने कुराको प्राकृतिक चित्रण यसरि गरिएको छ ।

थसोयां परबत कोसोयां समुदर
समुदर हुनुहुन हाल न्हां
सिमाहल लासा लासे लोहात फूगा तसे
नगुतिनं फांगां फासे दिल न्हां

अर्थात

(माथि हेरे पर्बत, समुद तल डरलाग्दो पाराको
स्याउला डसना, ढुंगाको तकिया सिरक ताराको )

"मुना-मदन"मा देवकोटाजी प्राकृतिक चित्रण यसरि वर्णन गर्नु हुन्छ ।

डाँडा र काँडा, उकाला ठाडा जङ्गार हजार
भोटको बाटो ढुंगा र माटो नङ्गार उजार
x x x
स्याउला चीसा ओछ्यान खासा जाडोले बज्ने दाँत
पकाई झिक्ता नखान पाई काँचाको काँचै भात

तर वास्तविकतालाई विचार गर्ने हो भने चालिस दिनभन्दा एक-दुई वर्षको उल्लेख उपयुक्त हुन आउँदछ। चालिस दिनमा ल्हासा पुगी पैसा कमाउनु भनेको सम्भवको कुरा होइन, तर मुनालाई फकाउनको लागि मात्र भनेको हुनाले अस्वाभाविक भए तापनि उपयुक्त नै मान्नु पर्ने कर लाग्छ। यस्तै मदनलाई तिब्बतमा हैजा लागेको कुरा बालकृष्ण समज्यूले मुकुन्द ईन्दिर ामा उल्लेख गर्नु भएको ऐंसेलुको रुख जस्तै हास्यास्पद छ । जाडो ठाउं भएकोले ल्हासामा तथा हाम्रो उत्तरी भेगतिर पनि हैजा रोग अहिलेसम्म सुन्न पाईएको छैन । कुनै पनि साहित्यकारले रचना गर्दा कल्पनामा मात्र उड्न खोज्दा स्वाभाविकताबाट हुत्तिएर जीवनको वास्तविकताबाट टाढिन्छ भने लेखकको गरिमामा समेत धक्का पुऱ्याई दिन्छ। यस्तो धक्का "मुना-मदन" काव्यमा चालीस दिनभित्र कमाएर ल्याउने कुरा र "हैजा"को घटनाले काव्यको स्वाभाविकतामा ठेस पुऱ्याएको छ ।

एकपटक देवकोटाज्यू गोसाइँकुण्ड जाने क्रममा बाटोमा बिरामी पर्दा उहाँलाई स्थानीय भोटेहरूले खूब स्याहार सुसार गरी निको तुल्याई फर्काएको थियो रे भन्ने सुन्नमा पाईन्छ। यदि यो कुरा सत्य हो भने उहाँले आफ्नो काव्यमा भोटेको मानविय व्यवहारको उल्लेख गर्न "हैजा"को विषय उल्लेख गर्नुभएको हुन सक्छ । अनि आपत् विपत्मा मानवसेवा गर्नु नै ईश्वरको सेवा गर्नु हो जस्तो दर्शन दिन खोज्नुभएको होला ।

"मुना-मदन"मा महाकवि देवकोटाज्यूको मुनाको सौन्दर्य र प्राकृतिक वर्णन, ल्हासाका मानिसहरूको स्वभाव, ल्हासाका दरबारको वर्णन इत्यादि उत्कृष्ट कल्पनाको अद्बितीय नमूना हुन् । अवश्य यी वर्णनले महाकवि देवकोटाको प्रतिभालाई यथेष्ट झल्काउँछ । सायद यी विषयहरू "जि वया ला लछि मदुनि" गीतिकाव्यमा छैनन् भनि बुद्धिजीवी भनाउंदा साहित्यकारहरु फलाक्दो होलान् । त्यसो भन्नुभन्दा अगाडि दुवै काव्यको लम्बाईलाई पनि सोच्नु आवश्यक हुन आउँछ । यसलाई विचार गर्दा चार लाईनको श्लो

कले जम्मा ३२ श्लोकको "जि वया ला लछि मदुनि" गीतिकाव्यमा आठौं संस्करणदेखि ५२ पेजको आकार लिई निस्केको मुना-मदन खण्डकाव्यमा जस्तै चित्रण, वर्णन कसरी हुन सक्ला ? अर्को कुरा महाकवि देवकोटा साहित्य क्षेत्रमा देखा पर्नुभएको समयमा पश्चिमी साहित्यको प्रभाव पनि निकै परिसकेको थियो । "जि वया ला लछि मदुनि" काव्यको रचना हुँदा पाश्चात्य साहित्य भित्रनु त कहाँ हो कहाँ त्यसको छायासम्म पनि आउन पाएको थिएन । यस दृष्टिकोणले पनि "मुना-मदन"मा जस्तो "जि वया ला लछि मदुनि" काव्यमा कल्पनाको तिव्र उडान नभएको हुनसक्छ ।

"मुना-मदन" खण्डकाव्यको दाँजोमा "जि वया ला लछि मदुनि" गीतिकाव्य फुच्चे भए तापनि कथानक, घटना, पात्र, प्रायः सबका सब यी दुवै काव्य एउटै धरातलमा पलाएर पनि यस काव्यले विविध विषयवस्तुलाई भित्र्याए झैं लामो "मुना-मदन"ले भित्र्याउन सकको छैन । "जि वया ला लछि मदुनि" ले सति प्रथा अमानविय भएको र यसलाई रोक्ने प्रयास चन्द्रशमशेर को समयभन्दा पहिलेदेखिनै भईरहेको झलक निम्न पंक्तिले देखाउँछ–

*लायकुया प्रधान वल थव थिति फुक्क मुन*
*सकसिन वनेमते धाल न्हां*
अर्थात
(भेला भए आफन्त अनि दरबारी भारदार
जे हुनु भयो नजाउ सति भने बारबार)

यसरि "जि वया ला लछि मदुनि" काव्यले तत्कालिन समस्या प्रस्तुत गर्नुको साथै नेपालका सांस्कृतिक रितिरिवाजलाई पनि दर्शाउन सफल भएको देखिन्छ। यात्रामा कुनै विघ्न बाधा आईनपरोस्, गर्न लागेको काम साफल्य होस् भन्ने मंगल कामना गर्ने नेपालीहरूको परम्परा छ । "जि वया ला लछि मदुनि"मा नायक तिब्बत जान लाग्दा नायिकाले गरेको विरहको वर्णन यसरी प्रस्तुत गरिएको छ–

*जव ल्हातिं सगुन फसे खव ल्हातिं ख्वोबि हुसे*
*जि प्रभु लिफः मस्वोसे झाल न्हां*
अर्थात
(दांया हातले सगुन थाप्दै पुछे आँसु बांयाले
फर्कि हेर्न सकेन प्रभु जस्तो मायाले )

"मुना-मदन" कल्पनाको उडानमा एउटा मार्मिक कथा मात्र भएर सर्र बगेको देखिन्छ। कुनै पनि साहित्यको निर्माण गर्दा साहित्यकारले आफ्नो कल्पनाको कुचीले समाजको रूपरेखाको चित्रणको साथै कुनै पनि विसंगतिको व्याख्या गरिदिनु साहित्यकारको कर्तव्य हुनु आउँदछ ।

"जि वया ला लछि मदुनि" गीतिकाव्य पनि नेपालको आफ्नै मौलिक लोक लय ("सिन्हाज्या") मा रचिएको छ। यो लय किसानहरूले असारे खेती गर्दा गाउने भाकाको भए पनि नेपालीहरुले अरु बेलामा समेत सुख दुःखको अनुभव गरि गाउने लोकप्रिय लय हो। त्यसरिनै "मुना-मदन" पनि नेपालको लोक लय "झ्याउरे"मा रचिएको छ। यो लय विशेष गरी "रत्यौली"मा गाउने चलन छ ।

यसरी "मुना-मदन" रच्नुभन्दा एक शताब्दी अगाडि रचिएको नेपालको साहित्याकाशमा देखिने "जि वया ला लछि मदुनि" गीतिकाव्य र भर्खर ३४, ३५ वर्ष मात्र पुगेको "मुना-मदन" खण्डकाव्यको विश्लेषणात्मक अध्ययन गरेको खण्डमा "मुना-मदन" जस्तो काव्य नेपालको साहित्याकाशमा धेरै थियो भन्ने स्पष्ट हुन आउँछ र यिनै लोकप्रिय कृतिहरुको आधारमा धेरै वर्षपछि "मुना-मदन" रचिएको हो भन्ने किटाण समेत गर्न सकिन्छ। यसरी नेपाली साहित्यमा चर्चित "मुना-मदन"को अग्रज काव्य नेपालभाषामा धेरै छन् । विशेष गरी "जि वया ला लछि मदुनि"लाई लिन सकिन्छ ।

यहांनेर कविवर माधवप्रसाद घिमिरेज्यूले आफनो सफल "राज-राजेश्वरी" खण्डकाव्य नेपालभाषाको प्राचिन काव्य "महारानी विद्यालक्ष्मी विदेशन थेंके हल" बाट प्रभावित भएर लेख्नुभएको भन्ने कुरा कविज्यूले राजेश्वरीको भूमिकामा उल्लेख गर्नुभएको प्रसंग मननिय हुन्छ। के महाकवि लक्ष्मीप्रसाद देवकोटाज्यूले पनि "मुना-मदन" खण्डकाव्य रच्नमा नेपालभाषाको प्राचीन काव्य "जि वया ला लछि मदुनि" बाट प्रेरणा पाएको होइन होला त ? यो सोचनिय विषय हो । पाश्चात्य साहित्यको प्रभाव समेत परेको उतिबेलाको नेपालको साहित्यमा नेपालकै अरु भाषाको प्रभाव पनि पर्न सक्नु कुनै आश्चर्य र अनौठो होइन ।

"मुना-मदन" र "जि वया ला लछि मदुनि" बारे लेख्ने सन्दर्भमा लक्ष्मीप्रसाद देवकोटा वनारसमा पढ्दाको सहपाठी काठमाडौं चिकंमुगलको लाखेननि निवासी ९५ वर्षिय गणेशलालज्यूले विद्यालयको एक कार्यक्रममा देखाइएको मर्मान्त ब्याले पछि देवकोटाले नेपालभाषा धनि भएर पनि यस्तो मार्मिक साहित्यको अभाव छ भनेपछि आफुले "जि वया ला लछि मदुनि" को कथा सुनाईदिएको र त्यसबाट असाध्यै प्रभावित भएर सोही राती यस्तै किसिमको कविता लेखेर देवकोटाले भोलिपल्ट सुनाएको कुरा सुनाउनु हुन्छ। त्यसैले साहित्यकारहरुले कुनै पनि साहित्यको मूल्याङ्कन बिना पूर्वाग्रह निष्पक्षरूपमा गर्नु पर्दछ। साथै कुनै पनि साहित्यकारले साहित्यको सृजना गर्दा आफूलाई कुनैबाट प्रभाव परेको छ भने माधवप्रसाद घिमिरेज्यूले झैं त्यस्को छिस्को मात्र भए पनि उल्लेख गर्ने कर्तव्य र ईमानदारिता देखाईदिए भावि सन्ततिले सन्तोषको श्वास फेर्न पाउंछन्।

Pushpa Pu (Chitrakar) is a historian and teaches in Tribhuvan University. He is also a well known critic and dramatist.